# काष्ठमण्डप कति पुरानो ? कसले बनायो ?

■ डा. महेशराज पन्त

जुन मण्डपको नाउँले नेपालको राजधानीको नाउँ रहन गयो, त्यो कहिले कसरी बन्यो भन्ने विषयमा परंपरादेखि यस्तो कुरा चलेर आएको छ–

इ लक्ष्मीनरसिंह मल्ल राजाले कांतिपुरका राज्य गर्दा समयमा मछिन्द्रनाथका लगनजात्राका दिनमा कोही येक विसेटले जात्रा हेर्न जांदा कल्पवृक्ष मनुष्यका रूप भैकन लग्नजात्रा हेर्न आयाका फेला पारी नररूप भैआयाका वृक्ष समाती ल्याई ठुलो सत्तल सालाकन येकै वृक्षका काठले पुऱ्याउला भनाई कबुल गराई छाडिदिया. चौठा दिनमा कांतिपुर्ल्याईकन राजा वक्साई ई सालवृक्षकन टुडिषेल लैजाई ढाली ढेरै काठ जमा गरी मदुसत्तल नाम एकै काठले वनायो र एक वृक्षका काठले वनायाका हुनाले काठमाडौ नाम गरि चलाया ॥ ॥ ई सत्तल प्रतिष्ठा भयाको छैन. प्रतिष्ठा गऱ्या रूष बिदा हुन्या कबुल थियो र रूष बिदा होला भनि प्रतिष्ठा गरेनन् ॥ ॥ नेपालसम्वत् ७१५ मा बनायाको हो ॥ ॥

(केम्ब्रिज विश्वविद्यालयको पुस्तकालयको म्यान्युस्क्रिप्ट् याड्. १९५२ सङ्ख्याको, श्री ५ सुरेन्द्रको जन्म भएसम्मको कुरा परेको, अप्रकाशित वंशावली, १२६ पत्र । डचान्यल राइट, हिस्टरि अफ् नेपाल्, यूनिभर्सिटि प्रेस, केम्ब्रिज, ई.सं. १८७७ यही वंशावलीको उल्था हो । यो कुरा हिस्टरि अफ् नेपाल्मा २११ पृ.मा छ ।)

लक्ष्मीनरसिंह ने.सं. ७४१ तदनुसार वि.सं. १६७७ (रामजी तेवारी आदि, ऐतिहासिक-पत्रसंग्रह २ भाग, नेपाल सांस्कृतिक परिषद्, २०२१, १-२ पृ.)देखि ने.सं. ७६१ तदनुसार वि.सं. १६९८ (धनवज्र वज्राचार्य, प्रधान संपादक-इतिहास-संशोधनको प्रमाण-प्रमेय, जगदम्बा-प्रकाशन, ललितपुर, २०१९, ८१ पृ.)सम्म राजा भएका र ने.सं. ७१५ तदनुसार वि.सं. १६५२ मा उनका बाजे शिवसिंहको राज्य चलिरहेकोले (उही, १५ पृ.) ने.सं. ७१५ मा लक्ष्मीनरसिंहलाई राजाको रूपमा देखाउनु नै इतिहासको दृष्टिले गलत छ। तर यो लेख काष्ठमण्डपको प्राचीनता निर्क्योल गर्ने सिलसिलामा लेखिएकोले लक्ष्मीनरसिंहको समय ने.सं. ७१५ लेखे पनि यहाँ हामीलाई खास खायस पर्दैन ।

वंशावलीमा प्रताप मल्लका बाबु लक्ष्मीनरसिंहको पालामा काष्ठमण्डप बन्यो भनी लेखिएको र त्यही कुराको देशविदेशमा प्रचार भइरहेकोमा वि.सं. २००४ मा काशीबाट प्रकाशित, तोत्रराज पाण्डेय र नयराज पन्तको नेपालको संक्षिप्त इतिहास (३३ पृ.)मा यस कुराको खण्डन यसरी भयो–

लक्ष्मीनरसिंहको राज्यमा एउटै रूखको काठबाट (गोरखनाथको) देवल बनेको हुनाले कान्तिपुरको नाम काष्ठमण्डप रहेको तथा काष्ठमण्डपको अपभ्रंश काठमाडौं हो भन्ने मानिसहरूको भनाइ छ। परन्तु स्थितिमल्लका पालामा पनि काष्ठमण्डप नाम देखिएकाले सो घटना लक्ष्मीनरसिंहको पालामा भएको जस्तो देखिंदैन ।

स्थितिमल्लका पालामा पनि काष्ठमण्डप नाम देखिएकाले सो घटना लक्ष्मीनरसिंहको पालामा भएको जस्तो देखिंदैन भनी त्यहाँ लेखिएकोले स्थिति मल्लको पालाको कुन अभिलेखमा काष्ठमण्डपको चर्चा आएको रहेछ भन्ने नबुझिए पनि ने.सं. ४९२ तदनुसार वि.सं. १४२९ को अर्जुनदेव र स्थितिराज मल्लको पालाको, स्वयम्भूको शिलालेख (उदाहरणको लागि भोलानाथ पौडेल आदि, अर्जुनमल्ल-जयस्थितिमल्लसमयाभिलेखः, संस्कृत-सन्देश १ वर्ष १०-१२ अङ्क, २०१०, १३-१७ पृ.)मा श्रीकाष्ठमण्डपपुरी (मूलका १०-११ पङ्क्ति), श्रीकाष्ठमण्डपमहानगर (मूलका १९-२० पङ्क्ति) र श्रीकाष्ठमण्डपस्थान (मूलको २५ पङ्क्ति) भनी लेखिएकोतर्फ सङ्केत गरेको जस्तो मलाई लाग्छ ।

ईश्वरराज अर्यालको नयाँ नेपालको इतिहास (काठमाडौं, विजय-पुस्तक-भण्डार, २०११)मा परेका इतिहाससम्बन्धी अशुद्धिको खण्डन गर्ने प्रसङ्गमा रामजी तेवारी, देवीप्रसाद भण्डारी र शङ्करमान राजवंशीको इतिहास-संशोधन १ संख्या (२०११।६।२।७)मा काष्ठमण्डपको प्राचीनताको विषयमा प्रमाण दिएर बढी लेखिएको छ (३-४ पृ.)।

नरहरिनाथ (काष्ठमण्डपः, संस्कृत-सन्देश १ वर्ष ६ अङ्क, ४ पृ.)ले प्रकाश गरेको, ने.सं. ४०५ तदनुसार वि.सं. १३४२ को ताम्रपत्रमा श्रीकाष्ठमण्डपनगरको उल्लेख भएको कुरालाई काष्ठमण्डपको पहिलो उल्लेख आएको रूपमा त्यस इतिहास-संशोधनमा देखाइएको छ । तर त्यस ताम्रपत्रमा रत्न मल्ल र अरि मल्लको विजयराज्यमा भनी लेखिएकोले नरहरिनाथले अङ्क चिन्न नसकी ६ लाई ४ पढेको (नरहरिनाथले ४ को अङ्कलाई भ्रमवश ६ भनी पढ्ने गरेको विषयमा महेशराज पन्त, ताडपत्रमा लेखिएका, अहिलेसम्म प्रकाशमा नआएका विक्रमको चौधौं शताब्दीका १५ वटा लिखतपत्र, पूर्णिमा ७७ पूर्णाङ्क, २०४७, २ पृ., ३ टिप्पणी हेर्नू) ठहरिएकोले त्यो ताम्रपत्र २०० वर्षपछिको मात्र हुन जान्छ। त्यसो भए पनि लक्ष्मीनरसिंहका बराजुका पनि बराजु रत्न मल्लको पालाको त्यो ताम्रपत्र भएकोले लक्ष्मीनरसिंहको पालामा काष्ठमण्डप बन्यो भन्ने कुराको खण्डन यतिबाट मात्र पनि हुन्छ ।

त्यस इतिहास-संशोधनमा दोस्रो प्रमाण भरखरै माथि चर्चा गरिएको, अर्जुनदेव र स्थितिराज मल्लको पालाको ने.सं. ४९२ तदनुसार वि.सं. १४२९ को, स्वयम्भूको शिलालेखमा काष्ठमण्डपपुरीको चर्चा आएको देखाइएको छ । तेस्रो प्रमाणचाहिँ ने.सं. ५०२ तदनुसार इटुंबहालको, जयसिंहराम वर्धनकी भाइबुहारी जैत्रलक्ष्मीको, वि.सं. १४३९ को शिलालेख (रामजी तेवारी आदि, काष्ठमण्डपे पारावतमहाविहारे (इटंवहाले) संस्थितो जयसिंहरामवर्द्धनस्य राज्ये स्थापितोऽभिलेखः, संस्कृत-सन्देश १ वर्ष १०-१२ अङ्क, ४१-४३ पृ.)मा काष्ठमण्डपका एक जना भिक्षुको नाउँ आएको कुरा देखाइएको छ ।

यसपछि वि.सं. २०१९ मा प्रकाशित संशोधन-मण्डलको इतिहास-संशोधनको प्रमाण-प्रमेय (प्रधान सम्पादक- धनवज्र वज्राचार्य, जगदम्बा-प्रकाशन, ललितपुर, ११०-११५ पृ.)मा काष्ठमण्डपको प्राचीनता सिद्ध गर्न लक्ष्मीनरसिंह राजा हुनुभन्दा अगाडिका १५ वटा प्रमाण जुटाई लेखियो । त्यसअनुसार अहिलेसम्म पाइएकोमा काष्ठमण्डपको पहिलो उल्लेख अहिले ने.सं. २६३ तदनुसार वि.सं. १२०० मा गद्दीमा राजा नरेन्द्रदेव हुँदा सारिएको, भोटको सक्य गुम्बामा रहेको नामसंगीतिमा छ । त्यहाँ लेखिएअनुसार श्रीकाष्ठमण्डपमा केलाछ्छेंका एक जना भलादमीको लागि नामसंगीतिको त्यो पुस्तक सारिएको हो । यताबाट वि.सं. १२०० मै घरको नाम मात्र काष्ठमण्डप नभई इलाका नै काष्ठमण्डपको नाउँले प्रसिद्ध भइसकेको रहेछ भन्ने देखिन आएको छ ।

त्यसपछि, ने.सं. ३६३ तदनुसार वि.सं. १३०० मा गद्दीमा अभय मल्ल राजा हुँदा सारिएको, अहिले राष्ट्रिय अभिलेखालयमा रहेको नामसंगीतिकै अर्को पुस्तकमा काष्ठमण्डपको उल्लेख आएको छ। त्यहाँ श्रीकाष्ठमण्डपपुर लेखिएकोले शहरको नाउँ नै त्यस वेलासम्म काष्ठमण्डपको नाउँले प्रसिद्ध भइसकेको देखिन्छ ।

ने.सं. ४०३ तदनुसार वि.सं. १३३९ मा राजा अनन्त मल्लको पालामा सारिएको, अहिले भोटको सक्य गुम्बामा रहेको शतसाहस्रिका प्रज्ञापारमिताको एउटा पुस्तकमा काष्ठमण्डपको उल्लेख आएको छ। त्यहाँ पुस्तक सार्नेको वतन दिँदा नेपालमण्डलको काष्ठमण्डप भनी लेखिएकोले काष्ठमण्डप शब्दले पूरै इलाका बुझाउने गरेको देखिन्छ। यसको अर्कोन वर्ष तिनै राजाको पालामा सारिएको, त्यसै गरी अहिले भोटको सक्य गुम्बामा रहेको शतसाहस्रिका प्रज्ञापारमिताको अर्को पुस्तकमा पनि नेपालमण्डलको काष्ठमण्डपमा बस्ने फलानाले सारेको भनी लेखिएको छ ।

राजा अर्जुनदेवको र स्थितिराज मल्लको पालामा स्वयम्भूको जीर्णोद्धार गरी राखिएको ने.सं. ४९२ तदनुसार वि.सं. १४२९ को शिलालेखमा श्रीकाष्ठमण्डपपुरी अर्थात् काठमाडौं शहर भनी लेखिएको कुरा त माथि इतिहास-संशोधनको प्रसंगमा आइसक्यो। अझ त्यही शिलालेखमा श्रीकाष्ठमण्डपमहानगर भनी लेखिएको पनि देखिएकोले यस शहरले त्यस वेलासम्म महानगरको रूप लिइसकेको कुरा पनि यहाँनिर भन्नुपर्छ ।

ने.सं. ५०१ तदनुसार वि.सं. १४३७ मा राजा स्थितिराज मल्लको पालामा कीर्तिपुण्यमहाविहारमा बसी सारिएको विदग्धमुखमण्डनको एउटा पुस्तक अहिले राष्ट्रिय अभिलेखालयमा छ । त्यहाँ कीर्तिपुण्यमहाविहार अर्थात् लगनबहाललाई काष्ठमण्डपअन्तर्गत पारिएकोले यताबाट काष्ठमण्डपको विस्तार बुझ्न सजिलो हुन्छ ।

ने.सं. ५०२ तदनुसार वि.सं. १४३९ को, इटुंबहालको एउटा शिलालेखमा काष्ठमण्डपका १ जना भिक्षुको नाउँ परेको कुरा त माथि इतिहास-संशोधनको प्रसंगमा लेखिसकेकोले त्यो यहाँ दोहऱ्याउनु आवश्यक छैन। यसपछिका, ने.सं. ५६४ तदनुसार वि.सं. १५०१ देखिका, लक्ष्मीनरसिंहका बराजुका पनि बराजुका बाबु यक्ष मल्लको पालादेखि ने.सं. ७२५ तदनुसार वि.सं. १६६१ सम्मका, लक्ष्मीनरसिंहका बाजे महेन्द्र मल्लको पालासम्मका अरू ८ वटा प्रमाण जुटाई इतिहास-संशोधनको प्रमाण-प्रमेयमा लक्ष्मीनरसिंहको पालामा काष्ठमण्डप बन्यो भन्ने कुराको खण्डन गरिएको छ ।

वि.सं. १२०० देखिका ऐतिहासिक उपकरणमा काष्ठमण्डपको चर्चा आएको कुरा ५० वर्षभन्दा पनि अगाडिदेखि प्रकाशमा आउँदा आउँदै पनि नेपालको कलाको इतिहासज्ञ भनी कहलाएकाहरू सुद्धा अझै पनि काष्ठमण्डप सोह्रौं शताब्दीको हो भनी लेख्दैछन् भन्ने कुराको दृष्टान्तको लागि यही वैशाखको महाभूकम्पपछि छापिएको, डीना बाङ्देलको लेखतर्फ औंल्याउनुपर्छ (नेपाल् अर्थक्वेक्; रिबिल्ड्इङ् होप्, रिबिल्ड्इङ् अ नेशन्, ओरिएन्टेशन्ज् २६ ठेली ५ अङ्क, ई.सं. २०१५ जून) ।

साँच्चै भन्ने हो भने, वि.सं. १९८८ मा प्रकाशित, प्रबोधचन्द्र बागचीको अन् दि यान्टिक्विटि अफ् द नेम् "काष्ठमण्डप अर् काट्माण्डु" (दि इन्डिअन् हिस्टर्इक्ल् क्वार्टर्लि ७ ठेली ४ सङ्ख्या, ई.सं. १९३१, ७४१-७४२ पृ.) को चर्चा गर्नुपर्छ । खुलाएर भन्दा, उनले वीरपुस्तकालय अर्थात् आजभोलिको राष्ट्रिय अभिलेखालयमा रहेको, ने.सं. ५३१ तदनुसार वि.सं. १४६८ मा काष्ठमण्डपनगरमा भीमदत्त सोमशर्माले सारेको लक्षहोमविधि भन्ने पुस्तक अघि सारी लक्ष्मीनरसिंहभन्दा २०० वर्षअगाडि नै काष्ठमण्डप नाउँ चलिसकेको थियो भनी वंशावलीको खण्डन गरेका छन् ।

वि.सं. २००४ मा प्रकाशित नेपालको संक्षिप्त इतिहास, वि.सं. २०११ मा प्रकाशित इतिहास-संशोधन र वि.सं. २०१९ मा प्रकाशित इतिहास-संशोधनको प्रमाण-प्रमेयमा लक्ष्मीनरसिंहभन्दा अगाडि नै काष्ठमण्डपको अस्तित्वको विषयमा लेख्दा प्रबोधचन्द्र बागचीको सो लेख यहाँ कसैले देखेका थिएनन्। त्यस लेखमा वि.सं. २०३७ मा संयोगवश मेरो आँखा पऱ्यो । त्यस लेखको नेपालीमा उल्था गरी काष्ठमण्डपको प्राचीनताको विषयमा पहिला अन्वेषकको रूपमा प्रबोधचन्द्र बागचीलाई स्थापना गरेर वि.सं. २०४९ मा मैले लेख प्रकाशित गरें (यसको यशको पात्र को ? लक्ष्मीनरसिंह मल्लको पालादेखि यस शहरको नाउँ काष्ठमण्डप रहन गयो भन्ने कुराको खण्डन प्रबोधचन्द्र बागचीले वि.सं. १९८८ मै गरिसकेका थिए, पूर्णिमा ८२ पूर्णाङ्क, ५६-६६ पृ.)।

वि.सं. १९८८ मा प्रकाशित, प्रबोधचन्द्र बागचीको लेखको चर्चा भित्रबाहिरका, नेपालविद् भनी कहलाएकाहरू कसैले पनि गरेका छैनन् र काष्ठमण्डपको प्राचीनताको खोजी गर्ने श्रेय संशोधन-मण्डललाई नै पूरापूर दिएका छन् (हालैको उदाहरणको लागि दीपेश रिसाल, 'अ हीप् अफ् हिस्टरि' नेपाली टाइम्ज्, ७६६ संख्या, ई.सं. २०१५, १०-१६ जुलाई, ११ पृ. र उही, 'ह्वाइ काष्ठमण्डप् म्याटर्ज्', ईसीएस् नेपाल्, ई.सं. २०१५, जुलाई-अगस्ट, ४४-५१ पृ. हेर्नू) ।

जोधपुरका राजा मानसिंहद्वारा सङ्गृहीत श्रीनाथतीर्थावली (६०-६१ पृ.)मा उत्तर दिशाका तीर्थहरूको क्रममा लेखिएको एउटा कुराको चर्चा पनि यहाँ गर्नुपरेको छ । संस्कृतभाषामा अनुष्टुभ् छन्दमा लेखिएका १० श्लोकको उद्धरण नरहरिनाथद्वारा आफ्नो काष्ठमण्डपः भन्ने लेख (संस्कृत-सन्देश, १ वर्ष ६ अङ्क, २-३ पृ.)मा भएको छ। ती श्लोकको उल्था यस्तो हुन्छ–

त्यस कान्तिपुरमा पहिले सिद्ध लोपीपाद (लूईपा) हुनुभयो । तलाउमाथि बसेर उहाँले मन्दिर बनाउनुभयो ॥३४५॥



काष्ठमण्डप



तत्र कान्तिपुरे सिद्धो लोपी [श्री] पादो [यो]ऽभवत्पुरा ।
स्थित्वा तडागोपरि स रचयामास मन्दिरम् ॥ ३४५ ॥
कैलासतः समानीय स्तम्भमेकं महाद्भुतम् ।
चकार चतुरः स्तम्भान् भिद्यमानेन तेन हि ॥ ३४६ ॥
आरोप्य तेषां शिरसि त्रिखण्डं भवनं व्यधात् ।
तस्याधिरोहिणी दिव्या माषपादसमाश्रिता ॥ ३४७ ॥
माषपादोऽपि दैर्घ्येण त्रिंशद्धस्तसमुच्छ्रितः ।
तथा हस्तद्वयमितरज्जुवेष्टनविस्तृतः ॥ ३४८ ॥
निष्पाद्य भवनं पश्चाच्चिकीर्षुर्यज्ञमुत्तमम् ।
त्रयस्त्रिंशत्कोटिमितान् देवीदेवान् शिवाद्रितः ॥३४९॥
समाजुहाव नाथोऽसौ तेष्वायातेषु सर्वशः ।
स्वयमन्तर्दधे नाथः प्रावात्सुस्तत्र देवताः ॥३५०॥
यज्ञापेक्षा हि ते देवास्तस्थुस्तत्र निमन्त्रिताः ।
न शक्नुवन्ति ते यातुं यज्ञसम्पादनं विना ॥३५१॥
प्रत्यब्दं श्रावणे मासि दैवी वाणी भवेदिति ।
'प्रस्तुता यज्ञरचना ?' पुनः शब्दो भवेदिति ॥ ३५२ ॥
'यज्ञद्रव्याण्याहृतानि प्रायः किञ्चिदपेक्षते' ।
तत्रैवं वर्तते वृत्तं यज्ञवार्ताऽतिदूरतः ॥ ३५३ ॥
अद्यापि देवतास्तत्र वर्तन्ते यज्ञहेतवे ।
अमुष्मै तीर्थराजाय नमस्कारा भवन्तु मे । ३५४॥इति॥

श्रीनाथतीर्थावलीको १ पृष्ठ– लुईपाले बनाएको कान्तिपुरको मन्दिरबारे

वंशावलीमा प्रताप मल्लका बाबु लक्ष्मीनरसिंहको पालामा काष्ठमण्डप बन्यो भनी लेखिएको र त्यही कुराको देशविदेशमा प्रचार भइरहेकोमा विसं.२००४ मा काशीबाट प्रकाशित, तोत्रराज पाण्डेय र नयराज पन्तको नेपालको संक्षिप्त इतिहास मा यस कुराको खण्डन यसरी भयो– लक्ष्मीनरसिंहको राज्यमा एउटै रूखको काठबाट (गोरखनाथको) देवल बनेको हुनाले कान्तिपुरको नाम काष्ठमण्डप रहेको तथा काष्ठमण्डपको अपभ्रंश काठमाडौं हो भन्ने मानिसहरूको भनाइ छ । परन्तु स्थितिमल्लका पालामा पनि काष्ठमण्डप नाम देखिएकाले सो घटना लक्ष्मीनरसिंहको पालामा भएको जस्तो देखिंदैन ।

कैलासबाट एउटा, ज्यादै गजबको खम्बा ल्याएर, त्यही टुक्रचाएर उहाँले ४ वटा खम्बा बनाउनुभयो ॥३४६॥

तिनको शिरमा राखेर उहाँले ३ खण्ड भएको भवन बनाउनुभयो । त्यसको दिव्य भरेङ माषपाद(?)मा अडेको थियो ॥३४७॥

माषपाद(?) पनि ३० हात लामो र डोरी बेर्नको लागि २ हात चौडा थियो ॥३४८॥

भवन बनाइसकेपछि उत्तम यज्ञ गर्न खोज्ने उहाँले कैलासबाट ३३ कोटि देवीदेवतालाई आवाहन गर्नुभयो । उहाँहरू सबै जना आउनुभएपछि खुद नाथ अन्तर्धान हुनुभयो, त्यहाँ देवताहरू बस्नुभयो ॥३४९-३५०॥

यज्ञको अपेक्षा गर्ने, त्यहाँ निमन्त्रणा गरिएका उहाँ देवताहरू यज्ञ नभईकन जान सक्नुहुँदैन ॥३५१॥

हरेक वर्ष श्रावण महीनामा यज्ञरचना पूरा भयो त ? भन्ने दैवी वाणी हुन्छ। यज्ञमा चाहिने सामग्री त धेरैजसो ल्याइसकियो, केहीचाहिँ बाँकी छ भन्ने शब्द फेरि हुन्छ । त्यहाँ यसरी ज्यादै टाढाबाट यज्ञसम्बन्धी कुरा हुन्छ ॥३५२-३५३॥

अहिले पनि त्यहाँ यज्ञको कारणले गर्दा देवताहरू बसिरहनुभएको छ। यस तीर्थराजलाई मेरो नमस्कार ॥३५४॥

पुराणको शैलीमा लेखिएको यस वर्णनबाट भूसबाट कनिका निकाले जस्तै गरी हामीले इतिहास निकाल्नुपर्छ । यसैको आधारमा ८४ सिद्धमध्ये एक लूईपाले कान्तिपुरमा बनाएको मन्दिर काष्ठमण्डप हो भनी इतिहासज्ञहरूले जोड्ने कोशिश गरेका छन् (नरहरिनाथ, काष्ठमण्डपः, संस्कृत-सन्देश १ वर्ष ६ अङ्क, २-३ पृ. र बाबुराम आचार्य, काठमाडौं, प्रगति, २ अङ्क, २०१०, २७-३० पृ.)। लूईपा कहिले भए भनी किटेर भन्न नसकिए पनि नवौंदेखि एघाह्रौं शताब्दीभित्र उनी भए भन्ने निष्कर्ष विद्वान्हरूको भएकोले लूईपासँग वि.सं. १२०० मा प्रसिद्ध भइसकेको काष्ठमण्डपलाई जोड्न नमिल्ने होइन कि जस्तो मलाई लाग्छ । कान्तिपुरमा लूईपाले बनाएको मन्दिर नाथसम्प्रदायको हो भन्ने कुरा श्रीनाथतीर्थावलीबाट माथि उद्धरण गरिएको अंशमा एक ठाउँ (३५० श्लोक)मा लूईपालाई नाथ शब्दले बुझाएकोबाट पनि थाहा हुन्छ ।

कान्तिपुरमा लूईपाले बनाएको मन्दिर र काष्ठमण्डप यी दुवैमा विधिविधान गर्न अझै बाँकी छ भन्ने भनाइको विषयमा पनि यस प्रसङ्गमा केही लेख्नुपरेको छ। खुलाएर भन्दा, यज्ञको लागि देवताहरूलाई आवाहन गरेर पनि चाहिने जति सबै सामग्री अझै जुटाउन नसकिएकोले त्यस मन्दिरमा यज्ञ गर्ने काम अझै सम्पन्न भइसकेको छैन भनी श्रीनाथतीर्थावली (३४९-३५४ श्लोक)मा लेखिनु र जहिले नून र तेलको भाउ एउटै हुन्छ, तहिले मात्र काष्ठमण्डपको प्रतिष्ठा गर्ने काम सम्पन्न हुन्छ भन्ने जनश्रुति हुनुलाई पनि हामीले बिर्सनु हुँदैन ।

काष्ठमण्डपको भार विशाल काठका चारवटा स्तम्भले लिएका छन् र यो मण्डप तिनै स्तम्भको सन्तुलनमा अडेको छ भन्ने वास्तुशास्त्रका ऐतिहासिकहरूको भनाइलाई श्रीनाथतीर्थावलीको ४ वटा खम्बामाथि भवन बनाएको भन्ने वाक्य (३४६-३४७ श्लोक)ले पनि त्यही भवनलाई सङ्केत गरेको भन्न मन लाग्छ ।

श्रीनाथतीर्थावली (३४७ श्लोक)मा भवनको विशेषण त्रिखण्ड अर्थात् तीन खण्ड भएको भन्ने छ। यहाँ त्रिखण्डको अर्थ के हो भन्ने स्पष्ट नभए पनि रमेशजङ्ग थापाले तीनतल्ले (काष्ठमण्डप, प्राचीन नेपाल ३ संख्या, २०२५, ३५ पृ.) भनी यसको अर्थ गरेको सम्झना हुन्छ । यो अर्थ ठीक हो भने काष्ठमण्डपको तलासँग यसले सामञ्जस्य राख्छ ।

बौद्ध विहारहरू खास गरी काठमाडौं र पाटनमा एकै टोलमा ३।४ वटा बने जति त होइन, त्यसभन्दा कम मात्रामा गोरखनाथी मण्डप एकताका काठमाडौं शहरमा व्याप्त थिए । उदाहरणको लागि अहिलेको बाङ्गेमूढामा त्यस्तो मण्डप भएकोले त्यो टोल स्थानमण्डपको नाउँले प्रसिद्ध भयो । त्यस टोलको अहिलेको नेवारी नाम थाय्मदु संस्कृतको स्थानमण्डपकै अपभ्रंश हो । त्यसभन्दा अलि पर पूर्वमा अहिलेको असनटोलमा अर्को मण्डप थियो । त्यसैले असनमण्डपको नाउँले असनटोल प्रसिद्ध भयो । त्यसभन्दा अलि पर दक्षिणपश्चिममा अहिलेको केलटोलमा अर्को मण्डप थियो। त्यसैले केलमण्डपको नाउँले केलटोल प्रसिद्ध भयो । त्यसभन्दा अलि पर दक्षिणपश्चिममा अहिलेको इन्द्रचोकमा अर्को मण्डप थियो । त्यसभन्दा अलि पर दक्षिणपश्चिममा मखनटोलमा अर्को एउटा मण्डप थियो । त्यसैले मखनमण्डपको नाउँले मखनटोल प्रसिद्ध भयो। त्यसभन्दा पनि केही पर दक्षिणपश्चिममा यही वैशाख १२ गते महाभूकम्प नगएसम्म काष्ठमण्डप उभिइरहेको थियो। मतापले हिँड्दाखेरि २० मिनेट पनि नलाग्ने बाटोमा यसरी कमसेकम ६ वटा गोरखनाथी मण्डप भएको प्रमाण पाइन्छ ।

इतिहासका सामग्रीको आधारमा भन्ने हो भने यहाँका गोरखनाथी मण्डपहरूमध्ये सबभन्दा पुरानो काष्ठमण्डप हो । केलटोलको मण्डपको चर्चा पहिलोपटक वि.सं. १४१८ मा आउँछ (महेशराज पन्त, ताडपत्रमा लेखिएका, वि.सं. १३५० देखि १४३५ सम्मका, अहिलेसम्म प्रकाशमा नआएका, १७ वटा लिखतपत्र, पूर्णिमा ९७ पूर्णाङ्क, २०५६, ६ पृ.)। असनटोलको मण्डपको चर्चा भने पहिलोपटक वि.सं. १४२१ मा आउँछ (उही, ६-७ पृ.)। मखनटोलको मण्डपको चर्चाचाहिँ पहिलोपटक वि.सं. १४८९ मा आउँछ (महेशराज पन्त, ताडपत्रमा लेखिएका, वि.सं. १४८७ देखि १५१२ सम्मका, अहिलेसम्म प्रकाशमा नआएका, ५२ वटा लिखतपत्र, पूर्णिमा १०० पूर्णाङ्क, २०५७, ६ पृ.)। इन्द्रचोक र बाङ्गेमूढाको चर्चा भने यति पुरानो समयमा मैले नभेट्टाए (महेशराज पन्त, भत्किएका रिक्थ दुरुस्त बनाउन सजिलो छैन, राजधानी १५ वर्ष १ अङ्क, २०७२।२।२२।६, ङ पृ.) पनि पृथ्वीनारायण शाहको वि.सं. १८२६ कार्तिकशुक्लचतुर्थीको लालमोहरमा अरूसँगै तिनको पनि चर्चा आएको छ (नयराज पन्त आदि, श्री ५ पृथ्वीनारायण शाहको उपदेश, जगदम्बा-प्रकाशन, ललितपुर, २०२५, १०६३-१०६६ पृ.) ।

काष्ठमण्डप कहिले बन्यो र कसले बनायो भन्ने इतिहासमा ठोस प्रमाण नपाइए पनि राजस्थानी परम्परा मान्ने हो भने बाहिरिया सिद्ध लूईपाले बनाएको भन्ने प्रसिद्धि भएकोले काष्ठमण्डप अहिले जुन जातिविशेषले हाम्रो हो भनी दाबी गरेको छ, त्यसमा त्यति तुक छैन कि जस्तो मलाई लाग्छ ।